# रामशाहको कचहरीको मर्यादा

श्री ५ महाराजा रामशाहबाट --- भनि हुकुम भयो र तहा देखिन् कचहरिको मर्यादा हुकुम भयो,

१. श्री ५ महाराजाबाट फलाना भनि हुकुम हुँदा महाराजाधिराज भनि बिन्ति गर्नू ।

२. साहेव चौताराले फलाना भनी मर्जी हुँदामा गरिवप्रवर वन्दिनिअवाज भनि विन्ति गर्नु ।

३. बाबु, टाडाका भैयाद् गोतियालाई साहेवसम्म भनि विन्ति गर्नु।

४. काजी, सरदार, भारदार भयाका ब्राह्मण षस मगर आदि हेरूलाई देवान् काजी मुखिया जिउ जिकारी आज्ञा भनी बोल्नु ।

५. महाराजाका नगिचका सनहेका मान्या चौतरिया साहेवले सलाम गर्दा गादिमा राजा भयाका बेलामा श्री महाराजाबाट एक सलाम फिराइ बक्सनु अन्यत्रमा ता दुई सलाम फिराइ बक्सनु ।

६. अरू टाडाका भाइ गोतियारहरूलाई त अन्यत्रमा मात्र एक सलाम फिराइ बक्सनु ।

७.   आफ्ना भात भान्साका नगिचका चौतरिया काका, बाज्या दाज्यू पर्न्याका रानीहरूलाई त श्री महाराजा श्री महारानीले पनि ढोक भेट गर्नु।

८.   श्री महाराजाका हजुर्मा छदामा साहेव चौतरिया पाउ लाग्नु भयो भन्या श्री महाराजासित विन्ति गरी बक्साइ आशीर्वाद सलाम गर्नु ।

९.   श्री गुरूलाई श्री महाराजाले दर्शन गर्न्या बेलामा छ भन्या सबैले गुरूलाई दर्शन गर्नु, अघिपछि त बिन्ति गरि बक्साइ गुरूलाई दर्शन गर्नु ।

१०.  अरूले श्री ५ महाराजका अगाडिमा बाबु बाज्या आया पनि ढोग नगर्नु ।

११.  श्री महाराजले केही काम हुकुम हुँदामा पछि-पछि हटि श्री महाराजका अदृश्य भया पछि पीठ फिराइ नजर परिन्ज्याल आफ्नु पिठ नजर नगराउनु ।

१२.  कचहरि मोचताउ पनि नदिनु ।

१३.  उपरखुट्टि पनि नलाउनु ।

१४.  नगिचका भाइ चौतरियालाई दाहिना तरफ चार पाटयामा गुरूलाई अगाडिमा चार पाटयामा आफ्ना भाइ काजी भयाकालाई बायाँतरफ चार पाट्यामा बसाइदिनु । ब्राम्हण षस मगर अरू काजी

भयाका छन् भन्या पाका बुडाहरूले हुकुमले बसनु जवान आला काँचाले ता खडै रहनु । बुडा पाकालेत अरू भलआद्मीले पनि हुकुमले बस्नु ।

१५. श्री ५ महाराजा कचहरिमा एक्लै विराजमान भयाका बेलामा द्वारमा नसाधि काजीले पनि नजानु ।

१६. द्वाऱ्या मान ज्यादैले मात्र खानु (?) ।

कचहरिको सकल मर्यादा एस्तै तरहले बाँधि बक्सनु भयो ।

साभारः नेपालको वैधानिक परम्परा, डा. जगदीशचन्द्र रेग्मी

पाठ्यक्रम विकास केन्द्र,

त्रिभुवन विश्वविद्यालय